

(वीर सहिदहरूको संस्मरणमा कीर्तिपुर,काठमाडौंबाट प्रकाशित )

# सहिद

SAHID WEEKLY साप्ताहिक





वर्ष ९, अंक ३७, (पूर्णाङ्क ३६१) पृष्ठ -६ ने.सं. ११३३ थिंलाथ्व, पुन्ही, वि.सं. २०६९ पौष १३ गते शुक्रबार Dec. 2012 मूल्य रू. ५।-


## पुस १४ सम्म नयाँ सरकार बन्ला ?

काठमाडौं, ९ पुस । राष्ट्रपति डा. रामवरण यादवले राजनीतिक सहमति कायम गरी प्रधानमन्त्रीको चयन र मन्त्रिपरिषद्को गठन गर्नका लागि यही पुस १४ गते शनिबारका दिनसम्म समय थप गर्नुभएको छ ।

राष्ट्रपति कार्यालयद्वारा सोमबार प्रकाशित विज्ञप्तिमा नेपालको अन्तरिम संविधान, २०६३ को धारा ३८ को उपधारा (१) बमोजिम राजनीतिक सहमतिका आधारमा प्रधानमन्त्रीको चयन र निजको अध्यक्षतामा मन्त्रिपरिषद् गठनका लागि उपयुक्त प्रस्ताव सिफारिस गर्न राजनीतिक दलहरूलाई गत

**क्रमशः अन्तिम पृष्ठमा**

## माओवाद र माओ विचारधारा फरक छ

काठमाडौं, । नेपाल मजदुर किसान पार्टी जिल्ला समिति काठमाडौंको आयोजनामा ११९ औं माओ त्से तुङ जन्म जयन्ती काठमाडौंमा मनाइयो ।

कार्यक्रममा पार्टी जिल्ला अध्यक्ष नारायण महर्जनले माओ त्से तुङ्ग विचार माकर्सवाद र लेनिनवादको उपज हो भन्नुभयो । उहाँले माकर्सवाद

**क्रमशः ४ पृष्ठमा**

## विद्युतभार कटौती झन् थपियो

काठमाडौं, । नेपाल विद्युत प्राधिकरणले पुस ११ गतेदेखि लागू हुने गरी विद्युतभार कटौती थप गरी हप्ताको १५ घण्टाले बढाएको छ । यसअघि मंसिर २३ गतेदेखि हप्तामा ६९ घण्टा विद्युत भार कटौती हुँदै आएकोमा बुधबारदेखि हप्तामा ८४ घण्टा विद्युतभार कटौती गरिने प्राधिकरणले जनाएको छ । परिवर्तित तालिकाअनुसार अब

**क्रमशः ४ पृष्ठमा**

## नेकाका असन्तुष्टले जनजाति पार्टी खोल्ने !

दलका नेताहरूसँग असन्तुष्ट हुँदैमा अर्को दल स्थापना गर्नु सही या गलत त्यो आफ्नो ठाउँमा छ । दल स्थापना गर्न जति सजिलो हुन्छ त्यति टिकाउन र विस्तार गर्न सजिलो छैन । कहिले मन्त्री बन्न नपाउँदा कहिले नेतृत्व गर्न नपाउँदा, खोलिएका दलले जतिसुकै धाक र धक्क देखाएपनि त्यो दल स्थिर राख्न कम्ता गाऱ्हो छैन । असन्तोष हुनेबित्तिकै पार्टी छोड्ने, पार्टी विभाजन गर्ने र अर्को नयाँ दल खोल्ने कारणले नै सानो देश नेपालमा धेरै पार्टी खोलिए र झण्डै चार दर्जन जति दलले संविधान सभाको निर्वाचनमा

**क्रमशः ४ पृष्ठमा**

## हस्तलिखित राहदानी
### विस्थापनको तयारी सुरू




काठमाडौं । राहदानी विभागले हस्तलिखित राहदानीलाई पूर्ण रूपमा विस्थापन गर्ने तयारी सुरु गरेको छ । अबको तीन वर्षमा २५ लाख हस्तलिखित राहदानी एकै पटक काम नलाग्ने हुने भएकाले राहदानी वितरणमा भविष्यमा आउने संकट न्यूनीकरण गर्न विभाग लागेको हो । हस्तलिखित राहदानी विस्थापन गर्ने प्रस्ताव परराष्ट्र मन्त्रालयमा विभागले बुझाइसकेको छ । राहदानी विभागका निमित्त महानिर्देशक यादव खनालले भने, 'आवश्यक सफ्टवेयर तथा पूर्वाधार निर्माण गर्न ९१ करोड रुपैयाँ बजेट मागेको छ ।

**क्रमशः ४ पृष्ठमा**

# कीर्तिपुरमा चिनियाँ राजदूत
## चीनको प्रगति उच्च, नेपाल जहाँको तहीँ




मंगल उच्च मावि र नेपाल चीन मैत्री केन्द्र कीर्तिपुरको संयुक्त आयोजनामा नेपाल चीनको दौत्य सम्बन्धको ५७ औं वार्षिक उत्सव तथा मंगल माविको स्वर्ण जयन्तीको उपलक्ष्यमा आयोजित वक्तृत्व कला प्रतियोगितामा विजयी हुन सफल छात्रहरुलाई नेपालका लागि जनगणतन्त्र चीनका राजदूत याङ्ग होलङ्गले शनिवार एक कार्यक्रमबीच पुरस्कार वितरण गर्नुभयो ।

पुरस्कृत हुनेहरुमा एपीएफका छात्र सरोज बुढाथोकी प्रथम, ग्रीन भिलेज स्कुलका छात्रा उषा गौतम द्वितीय, पाँगा माविका छात्र उज्ज्वल प्रकाश खनाल तृतीय र पुष्पसदनका छात्र सुवास खनाललाई सान्त्वना पुरस्कार प्रदान गर्नुभएको थियो ।

कार्यक्रममा राजदूत याङ्ग होलाङ्गले नेपाल चीनको दौत्य सम्बन्धको वार्षिक उत्सवको उपलक्ष्यमा कार्यक्रम आयोजना गरेकोमा सराहना व्यक्त गर्दै धन्यवाद दिनुभयो ।

वहाँले चीन नेपाल र नेपाली जनताको हितमा सधैं सहयोग गर्नै तयार रहेको बताउनुभयो ।

कार्यक्रममा नेपाल चीन अध्ययन केन्द्र कीर्तिपुरका अध्यक्ष डा. चन्द्रमान बज्राचार्यले भृकुटी र अरनीको सम्बन्धबारे स्मरण गर्नुभयो । चीन जनगणतन्त्रको स्थापना र नेपालको ७ सालको स्वतन्त्र एउटै वर्षमा भएपनि चीन स्वतन्त्रपछि अहिले विश्वमै शक्तिशालीको रुपमा उदय भैसक्यो भने नेपाल जहाँको तहिँ रहेको बताउनुभयो । अहिले पनि नेपालमा स्थिर सरकार गठन गर्न नसकी राजनैतिक अन्यौल कायमै रहेको छ भन्नुभयो ।

कार्यक्रममा एमाओवादी नेता सुरेश आले मगरले विद्यार्थीहरुको प्रतिभा प्रस्फुटन हने वक्तृत्वकला प्रतियोगिता गरेकोमा सराहना व्यक्त गर्दै निरन्तरताको कामना गर्नुभयो । चीन नेपालको विकासमा हरेक क्षेत्रमा इमानदार सहयोग रहेको बताउँदै छिमेकी राष्ट्रको कर्तव्य पुरा गरेको छ भने अर्को छिमेकी राष्ट्र भारत सरकार हस्तक्षेपकारी र विस्तारवादी व्यवहारबाट खतरा छ भन्नुभयो ।

कार्यक्रममा विद्यालय व्यवस्थापन समितिका अध्यक्ष एवं कार्यक्रमका सभापति प्रा.डा. शिवशरण महर्जनले नेपाल चीन १९५५ देखि सम्बन्ध रहेको बताउनु भयो ।

## जलस्रोतको धनी देशमा ५३० मे.वा. लोडसेडिङ्ग

जलस्रोतको धनी देशमा लोडसेडिङ्गको मार धेरै खप्नु पर्ने बाध्यता छ । मुलुकमा अपार जलस्रोत रहँदा रहँदै पनि विद्युत माग अनुसार उत्पादन गरी आपूर्ति दिन सकेको छैन । स्वदेशी र विदेशी विद्युतमा लगानी गर्न चाहेरपनि उत्पादनको वातावरण बन्न नसकेको मुलुक हो नेपाल । सरकार लोडसेडिङ्ग न्यूनिकरण योजना, २०६८ बमोजिम आ.व. २०७२/०७३ को अन्तसम्म विद्यमान लोडसेडिङ्ग पूर्णरुपमा अन्त्य गर्ने फुस्रो कार्यक्रम हरेक वर्ष भटभट्याउन थाकेको छैन ।

मुलुकमा २०६९ जेठ २० गते सम्मको विद्युत माग र आपूर्ति अवस्था हेर्दा सरकार जनमुखी नभएको प्रष्ट हुन्छ ।

नेपालमा नेपाल विद्युत प्राधिकरणको उत्पादन २०७ मेगावाट, निजी क्षेत्रको उत्पादन ११८ मेगावाट, भारतबाट आयात भएको ११४ मेगावाटबाट गरेर जम्मा आपूर्ति ४३९ मेगावाट छ भने विद्युतको उच्च माग ९६९ मेगावाट छ । ५३० मेगावाट आपूर्ति गर्न नसकी लोडसेडिङ्ग बर्षेनी भैरहेको छ ।

यो तथ्याङ्क उर्जा मन्त्रालयका सहायक प्रवक्ताले पुस ९ गते पत्रकार भेटघाटमा व्यक्त गर्नुभएको हो ।

## कीर्तिपुरमा दादुरा रुबेला खोप शुभारम्भ



यहि पौष १० गते देखि १८ गते सम्म कीर्तिपुरमा दादुरा रुबेला खोप अभियान २०६८-६९ शुरु भएको छ । यस अभियानका प्रमुख दातृ निकायहरुमा लायन्स क्लब इन्टरनेशनल, युनिसेफ, रोटरी इन्टरनेशनल र विश्व स्वास्थ्य संघ रहेको छ ।

**क्रमशः अन्तिम पृष्ठमा**

## ऐतिहासिक जनअन्दोलन २०४६ चैत २० गते शहादत अमर सहिद


लनबहादुर महर्जन
वि सं. २००६ माघ


हिराकाजी महर्जन
वि सं. २०१७ माघ


राजमान माली
वि सं. २०२५ मंसिर


राजेन्द्र महर्जन
वि.सं. २०३० चैत

सहिद साप्ताहिक
वर्ष ९ अंक ३७, २०६९ पौष १३ गते शुक्रवार
शंखापुर प्रकाशन समूहको लागि
सम्पादक/प्रकाशक: नारायण महर्जन
विज्ञापन/वितरक: नेल्सन
व्यवस्थापक: प्रताप, वीरुण
कम्प्यूटर टाइप/सेटिङः श्याम महर्जन
सम्पर्क कार्यालय: जहुँ हिटी युवा क्लव – ११
पाँगा, कीर्तिपुर, फोन नं. ४३३०५८३
E-mail:- kipushahid@hotmail.com
www.kipushahid.blogspot.com
www.ourkirtipur.com.np
मुद्रण : शर्मिला प्रिन्टर्स्, डल्लु, काठमाडौं

## सम्पादकीय ......

### देश जलिरहेछ राष्ट्रपति विदेश घुमिरहेछ ।

राष्ट्रपति रामवरण यादवको छिमेकी राष्ट्र भारतको ५ दिने भ्रमण भइरहेको छ । देश जलिरहेको बेला राष्ट्रपतिको यो भ्रमण कतै आगो निभाउन दमकलको खोजी हो कि भारतको एक सिपाही हो भोलिका दिनमा प्रष्ट हुँदै जाला ।

राष्ट्रपति मात्र होइन राष्ट्रमा रहेका सबै नेपाली जनता अहिले अँध्यारोमा रहेको छ दलहरुको बिग्रँदो बुद्धिको कारण । छैठौं पटक सहमतीय सरकार गठन गर भनेर राष्ट्रपतिको समयसीमा बारम्बार नाघ्दै गएका छन् । यस्तो शुन्यता चिर्न राष्ट्रपति पनि असफल भए जसरी दलहरु असफल छन् ।

राष्ट्रपतिको पछिल्लो पाइला सर्वदलीय बैठक संविधान सभामा प्रतिनिधित्व गरेका दलहरुलाई बोलाएर छलफल गर्नुभएको छ । निकासको लागि राम्रो कदम मान्न सकिन्छ ।

पहिलो छलफल हात्ती आयो फुस्सा भयो । संचार माध्यम र प्रमुख दलहरुले एउटा निकास निस्कने अडकल गरेको थियो ।

भारतको एक कार्यक्रममा सहभागी हुने नाममा भएको यो भ्रमणले जिवित एउटै संवैधानिक निकाय भारतको सिपाही भएर आउने होइन र भारतको पानी बोकेर दमकल भएर आउने पनि होइन ।

भारतको चाहना के हो ? भारतसँगै कसरी नेपालको हितमा कुटनैतिक सम्पर्क अगाडि बढाउने र भारतले मिचेका भूमि कसरी फिर्ता लिने र असमानसन्धि खारेज कसरी गर्ने आदिबारे राष्ट्राध्यक्षको विचार विमर्श हुनु जरुरी छ । भारतसँग भएका जे जति कुरा नेपाली जनतालाई पारदर्शी गर्नै पर्दछ । नत्र नेपाली जनताले राष्ट्राध्यक्ष हो भनेर काँध थापेर बस्दैन ।

देश जलिरहेको बेला राष्ट्रपतिले नेपालकै पानीबाट दमकलको भूमिका खेल्नु पर्दछ । पटक पटकको प्रयास असफल भैसकेपछि अब बहुमतीय प्रणालीमा जानु पर्दछ ।

बहुमतीय सरकारले दलगत स्वार्थ भन्दा माथि उठेर देश र जनताको हितमा काम गर्नुपर्दछ । बहुमतीयमा जान पनि अप्ठ्यारो मान्नु हुन्छ भने स्वतन्त्र र तटस्थ व्यक्तिको नेतृत्वमा सरकार गठन गरी संविधानसभाको निर्वाचन होइन संसदीय निर्वाचन गरी अगाडि बढ्नु जाति हुनेछ ।

# एमाओवादी भारतीय विस्तारवादको ट्रोजन हर्स

♦ प्रेम सुवाल,
विदेश विभाग प्रमुख, नेमकिपा

नेपाल मजदुर किसान पार्टीलगायत सात दलको नेतृत्वमा जनआन्दोलनको बलमा २०६३ बैशाख ११ गते निरंकुश राजतन्त्रको प्रतिगमन समाप्त भयो र प्रतिनिधिसभा पुनःस्थापना भयो । नेकाका तत्कालीन सभापति गिरिजाप्रसाद कोइरालाको नेतृत्वमा सात दलमध्ये ६ दलको सरकार गठन भयो । पूँजीवादी सरकारमा नजाने नीति लिएको नेपाल मजदुर किसान पार्टी प्रतिपक्षमै बस्यो ।

दस वर्ष सशस्त्र संघर्षमा लागेको माओवादीका प्रचण्ड र बाबुरामलगायत नेताहरू २०६३ असार २ गते प्रम निवास बालुवाटारमा सार्वजनिक भए । माओवादी प्रतिगमनविरोधी जनआन्दोलनमा लागेका सात दलसँग २०६२ मंसिर ७ गतेको बान्हबुँदे समझदारीअनुसार शान्ति प्रक्रियामा आएको थियो । बान्हबुँदे समझदारीको मस्यौदा कार्तिक महिनामा भारतीय शासक वर्गको उपस्थितिमा नेका, एमाले, सद्भावना, संयुक्त जनमोर्चा र माओवादीबीच दिल्लीमा भएको थियो । यो समझदारीको 'भरपर्दो अन्तर्राष्ट्रिय शक्ति' लगायतका बुँदामा नेमकिपाले फरक मत राखेको थियो । सार्वजनिक भएलगत्तै माओवादी गिरिजा नेतृत्वको सरकारमा जान हतारियो र कृष्णबहादुर महराको नेतृत्वमा गिरिजाको सरकारमा सामेल भयो ।

माओवादीले संविधानसभाको चुनाव आफ्नो प्रस्ताव दाबी गर्दैछ । तर प्रधानमन्त्री बाबुरामले २०६९ जेठ १४ गते संविधानसभा भङ्ग गरे र मंसिर ७ गतेको लागि संविधानसभाको चुनाव घोषणा गरे । एमाओवादी र प्रम बाबुरामले भने - 'सर्वोच्च अदालतको आदेशानुसार संविधानसभा स्वतः विघटन भएको हो ।' प्रमले असंवैधानिकरुपले संविधानसभा भंग गरेपनि प्रमुख प्रतिपक्षी पार्टी नेका र एमाले मौन बसे । यसकारण राष्ट्रपतिले जेठ १६ गते प्रम बाबुराम संसद सदस्य नरहेकोले पदमुक्त भएको र कामचलाउ भएको घोषणा गर्नुभयो ।

सर्वोच्चको आदेश प्रधानमन्त्री एक्लैलाई थिएन, संविधानसभा र संसदलाई पनि थियो । प्रधानमन्त्रीले सर्वोच्चको आदेशबारे संसद र संविधानसभामा छलफल गराएर मतदानमार्फत् निर्णय गराउनुपर्ने थियो । जेठ १४ गते राती ११:३१ बजे संविधानसभाको अवधि छँदै प्रम बाबुराम एक्लैले पत्रकार सम्मेलन गरी संविधानसभा भंग गरे र मंसिर ७ गतेको लागि निर्वाचन घोषणा गरे । प्रम बाबुराम आफैले घोषणा गरेको मंसिर ७ गतेको चुनाव गर्न असफल भयो । यसर्थ राष्ट्रपतिले २०६९ मंसिर ८ गते सहमतीय सरकारको लागि औपचारिक आह्वान गरे । तत्पश्चात् प्रधानमन्त्री बाबुरामले भने - 'म गोली खान तयार छु तर 'बालुवाटार छाड्दिनँ ।' प्रम बाबुरामले मन्त्रिपरिषद्को बैठक राखी सहमतीय सरकारको लागि मंसिर ८ गते राष्ट्रपतिबाट भएको आह्वान र जेठ १६ गतेको संसद सदस्य नरहेकोले



प्रधानमन्त्री पदमुक्त भएको राष्ट्रपति कार्यालयको विज्ञप्ति संविधानविपरीत भएको निर्णय गरे ।

संविधानको धारा ३६ (क) २ मा राष्ट्रपति मुलुकको राष्ट्राध्यक्ष हुने, ३६ (क) ३ मा संविधानको संरक्षण र पालना गर्नु राष्ट्रपतिको प्रमुख कर्तव्य हुने उल्लेख छ । त्यस्तै संविधानको धारा मा राष्ट्रपति नेपाली सेनाको परमाधिपति भएको उल्लेख छ ।

राजनीतिक सङ्कट समाधानको लागि राष्ट्रपतिले सुरू गरेको कारबाहीलाई सत्तारुढ दलहरूले 'कू'को संज्ञा दिएको गलत हो । निकासको लागि राष्ट्रपतिको कदमलाई सबैले समर्थन गर्नुपर्दछ । छोटो समयको लागि राष्ट्रपति शासन, चुनावमा भाग नलिने तटस्थ व्यक्तिहरूको स्वतन्त्र र निष्पक्ष निर्वाचन सरकार गठन, बाधा अड्काउ फुकाउ, संविधानको बाँकी कामसमेत पूरा गर्ने संसदको चुनाव र राज्य पुनःसंरचना नभएसम्मको लागि स्थानीय निकायको चुनावसमेत अविलम्ब सम्पनन गर्न राष्ट्रपतिलाई सहयोग गर्नु जिम्मेबार नेपालीको कर्तव्य हो ।

मधेसी दलहरू 'एक मधेस एक प्रदेश' आफ्नो प्रस्ताव दाबी गर्छन् । तर गिरिजा र प्रचण्डले २०६३ फागुन ११ गतेको आठ दलको बैठकमा एसडी मुनीका अनुसार एक मधेस एक प्रदेश भारतको एजेण्डा बताएका थिए । भारतीय उक्साहटमा मधेसी मोर्चाले एक मधेस एक प्रदेशमा अडान लिएको वीरगञ्जस्थित भारतीय महावाणिज्य दूतावासका काउन्सुलरको एक मधेस एक प्रदेश नबने आफ्नो मुटु टुक्रिएझैं हुने बताएबाट स्पष्ट हुन्छ ।

प्रचण्डले भारतको सक्रिय समर्थनविना १२ बुँदे समझदारी सम्भव थिएन, संविधानसभा निर्वाचन पनि सम्भव थिएन, अनि गणतन्त्र घोषणामा पनि अप्ठ्यारो आउन सक्थ्यो भनी 'द हिन्दू' दैनिकलाई बताएका थिए । एसडी मुनीले आफ्नो लेखमा सन् २०१२ मा प्रचण्ड र बाबुरामको पत्र भारतीय प्रधानमन्त्रीसम्म पुऱ्याएको उल्लेख गरेका थिए । संयुक्त राष्ट्रसंघका महासचिव वान कि मूनले नेपालको शान्ति प्रक्रियामा भारतको भूमिका अहम् भएको बताएका थिए । यसरी माओवादीले भारतीय एकाधिकार पूँजी र भारतीय विस्तारवादको सेना बोकेको काठको घोडा (ट्रोजन हर्स) को भूमिका खेल्दैछ ।

प्रमुख प्रतिपक्षी नेका र एमालेले असंवैधानिक कदम उठाएका प्रधानमन्त्रीविरूद्ध आन्दोलन घोषणा गरे । तर प्रधानमन्त्री पाउने लोभमा आन्दोलन सशक्त गरिएन । अन्ततः आन्दोलन नै स्थगित गरे। यसकारण प्रचण्डले भने - 'हेर्नुहोला, काँग्रेस र एमालेका नेताहरूले बाबुरामलाई नै मान्नुहुन्छ, मलाई त्यो विश्वास बढ्दै गएको छ । अन्तिममा मान्नुहुन्छ ।'

प्रम बाबुरामले दलहरूको हातबाट सरकार बाहिर गए पूर्वराजाको हातमा पुग्ने पनि बताए । प्रमको उक्त भनाइ गलत छ किनभने जननिर्वाचित संस्था राष्ट्रपति यथावत भएको अवस्थामा पूर्वराजाको केही लाग्नेछैन । प्रम स्वयं वा प्रमको पार्टी एमाओवादीले साथ दिए पनि पूर्वराजा पुनः सत्तामा आउनेछैन किनभने नेपाली जनता २००७ सालको भन्दा धेरै सचेत छन् ।

प्रधानमन्त्रीले राजनीतिक र प्रशासनिक क्षेत्रका उच्च तहमा भ्रष्टाचार नमुछिएको व्यक्ति पाउन गाऱ्हो भयो, भ्रष्टाचारले आफैलाई खाने डर लाग्यो भनी बताएको कुरा पदले नसुहाएको लज्जास्पद हो । यो भनाइले प्रम पूर्ण असफल भएको पुष्टि गर्छ । लोडसेडिङ बढ्दै छ । सरकारहरूले नेपालको नदीनाला कोशी, गण्डकी, कर्णाली, महाकालीलगायत जलस्रोत भारतको हातमा दिइसके । पत्रिकाहरूमा 'हिसिला प्राधिकरण डुबाउन सक्रिय' जस्ता समाचार प्रकाशित भइरहेको छ । यसले प्रमका वरिपरि बस्नेहरू नै ठूलठूला भ्रष्टाचार र कमिसनमा संलग्न रहेको समाचार सत्य सावित हुन्छ ।

नेपाली सीमामाथि भारतीय अतिक्रमण, भारतीय एसएसबीको अत्याचार र खुला सिमानाको कारण कालोबजारबाट नेपाली जनता पीडित छन् । अमेरिकी साम्राज्यवादले प्रजग कोरियाविरुद्ध ६१ वर्षदेखि आर्थिक नाकाबन्दी लगाउँदै छ । तर प्रजग कोरियाका नेता र जनता कोरियाली शैलीको समाजवादको विकास र निर्माणमा लागिपरेका छन् । प्रजग कोरियाले सन् १९९६ मा पहिलो भूउपग्रह प्रक्षेपण गऱ्यो भने यही डिसेम्बर १२ का दिन दोस्रो भूउपग्रह प्रक्षेपण गऱ्यो । यो प्रजग कोरियाको विज्ञान र प्रविधिको अगाडि बढेको अवस्था हो ।

आणविक हतियार थुपारेको निहुँमा अमेरिकी साम्राज्यवादले इराकमाथि आक्रमण गऱ्यो । नेता सद्दाम हुसेनलाई हत्या गऱ्यो र त्यहाँको तेल खानी कब्जा गऱ्यो ।

लिवियाका नेता गद्दाफीले संरा संघ अमेरिकाको हतियार भएर काम गरेकोले यो संघलाई अन्य गोलादर्धमा सार्नुपर्ने विचार दिएका थिए । यसैकारण अमेरिकी नेतृत्वमा साम्राज्यवादीहरूले लिवियामा आक्रमण गरे, नेता गद्दाफीको हत्या गरे र तेलखानी कब्जा गरे ।

समाजवादी देश क्युवाविरूद्ध अमेरिकाले ५१ वर्षदेखि नाकाबन्दी लगाउँदै क्युवाका पाँच देशभक्त युवाहरूलाई अमेरिकामा गैरकानुनी ढङ्गले थुनामा राखी मानव अधिकारको हनन गरिरहेको छ । संरा संघको महासभाले क्युवाविरूद्धको अमेरिकी नाकाबन्दी हटाउन २१ औं पटक प्रस्ताव पारित गऱ्यो । तर अमेरिकाले विश्वको जनमतलाई ठाडै अस्वीकार गऱ्यो र नाकाबन्दी कायम नै राख्यो ।

संरा अमेरिका र नेटोले सिरियाका विद्रोहीहरूलाई सहयोग गरी राष्ट्रपति बसाद अल अस्सादलाई अपदस्थ गर्न खोज्दैछन् । ओबामा र क्लिन्टनले सिरियाले विद्रोहीहहरूलाई रासायनिक हतियार प्रयोग गर्न लागेको आरोप लगाउँदै आक्रमणको तयारी गर्दैछन् । रूस र चीनले संयुक्त राष्ट्र संघको सुरक्षा परिरषद्मा सिरियाको पक्षमा विशेष अधिकार प्रयोग गरेको साना देशहरूको सार्वभौमिकता र स्वतन्त्रताको पक्षमा छ ।

*(नेमकिपा चौथौं काठमाडौं जिल्ला सम्मेलन मंसिर ३० गते मा व्यक्त विचार - सं.)*

# कीर्तिपुरमा दादुरा रुबेला खोप अभियान २०६८-६९

– रविन्द्र बहादुर प्रधान



दादुरा ज्यादै छिटो सर्ने संक्रामक रोग हो । यो रोग भाइरसबाट सर्ने रोग हो । दादुरा कुनै पनि उमेरका मानिसलाई लाग्न सक्छ र यसले छिट्टै महामारीको रुप लिन सक्छ । पाँच वर्ष मुनिका बालबालिकामा यो रोग धेरै पाइएको छ । यो रोग पाँच वर्ष मुनिका बालबालिकाको मृत्यु गराउने प्रमुख कारण हो । दादुरा रोग लागे पछि निमोनिया, झाडापखाला, मेनिन्जिाईटिस, कुपोषण जस्ता जटिलताको कारणले विरामीको मृत्यु हुन सक्छ । दादुराको खोप लगाएमा दादुरा रोग लाग्नबाट बच्न सकिन्छ । संसारभरी नै दादुरा खोपको व्यापक प्रयोग गरिदै आएको हुँदा दादुराको कारणले हुने बाल मृत्यु दरमा उल्लेखनीय कमी आएको छ ।

रुबेला रोग दादुरा जस्तै देखिने संक्रामक रोग हो । यो रोग बालबालिका र वयस्कहरुमा देखिन्छ । रुबेला सामान्य प्रकारको रोग हो र प्रायः गरी आफै ठिक हुन्छ । तर गर्भावस्थाको पहिलो त्रैमासिकमा रुबेला लागेमा ती महिलालाई जन्मिने शिशुको कान, आँखा, मुटु र मष्तिष्कमा आघात परी जन्मजात विकृतिहरु देखिन सक्छ जसलाई कन्जेनिटल रुबेला सिन्ड्रम (Congential Rubella Syndrome - CRS) भनिन्छ ।

**लक्ष, उद्देश्य तथा अभियान संचालन कार्य नीति**

दादुरा रुबेला खोप अभियानको लक्ष्य लक्षित उमेर समूहका बालबालिकालाई दादुरा रुबेला खोप प्रदान गरी दादुरा र रुबेला रोगहरुबाट हुने विरामी दर र मृत्यु दर घटाउनु नै यो खोप अभियानको लक्ष्य हो ।

यस अभियानको उद्देश्य देशभरीका ९ महिना देखि १५ वर्ष मुनिका सम्पूर्ण बालबालिकालाई दादुरा रुबेला खोप प्रदान गर्नु हो । यस अभियानको लक्षित समूह भनेको ९ महिना देखि १५ वर्ष मुनिका बालबालिकाहरु हुन् । यस दादुरा रुबेला खोप अभियानको अवसरमा सोही खोप केन्द्रबाट पाँच वर्ष मुनिका बालबालिकालाई पोलियो थोपा पनि खुवाउने नीति रहेको छ । यो अभियान तीन चरणमा गरेर देशका सबै जिल्लाहरुमा संचालन भइरहेको छ । प्रथम चरण अन्तर्गत सूदुर पश्चिमान्चल क्षेत्रका ९ जिल्लाहरु र मध्य पश्चिमान्चल क्षेत्रका बाँके, बर्दिया, दांग, सुर्खेत, प्युठान र रोल्पा गरी जम्मा १५ जिल्लाहरुमा रहेको छ । दोश्रो चरण अन्तर्गत मध्य-पश्चिमान्चल क्षेत्रका बाँकी ९ जिल्लाहरु र पश्चिमान्चल क्षेत्रका सबै १६ जिल्लाहरुमा पर्दछन् । तेश्रो चरण अन्तर्गत मध्यमान्चल क्षेत्रका सबै १९ जिल्लाहरु र पूर्वान्चल क्षेत्रका सबै १६ जिल्लाहरु पर्दछन् । प्रथम, दोश्रो र खोप कार्यक्रम सम्पन्न भै सकेको छ भने तेश्रो चरण अन्तर्गत मध्यमान्चल र पूर्वान्चल क्षेत्रमा २०६९ मंसिर २९ गते संचालन भै रहेको छ ।

**कीर्तिपुर नगरापालिकामा अभियानको बारेमा भै रहेको केही जानकारी तथा गतिविधिहरु**

कीर्तिपुर नगरपालिकाको वडा नं १ देखि १९ सम्म २०६९ पौष १० गते देखि पौष १८ गते सम्म दादुरा रुबेला अभियान अन्तर्गत खोप दिने कार्यक्रम रहेको छ । कीर्तिपुर नगरपालिकामा जम्मा ६० वटा खोप केन्द्रहरु तोकिएका छन् । खोप केन्द्रहरु विद्यालय, स्वास्थ्य चौकी, उपस्वास्थ्य चौकी, पोलि क्लिनिक, प्रहरी चौकी तथा सार्वजनिक भवनहरुमा तोकिएका छन् । कीर्तिपुर नगरपालिकामा २४००० बालबालिकालाई दादुरा रुबेला खोप दिने लक्ष्य राखिएको छ ।

यस खोप अभियानको प्रचार प्रसारको लागि कीर्तिपुर नगरपालिकाले माइकिंगको व्यवस्था गरेको छ । लायन्स क्लब अफ काठमाडौं कीर्तिपुर र लियो क्लब अफ काठमाडौं कीर्तिपुरको आयोजनामा पौष ६ गते पांगामा र पौष ७ गते कीर्तिपुरम दादुरा रुबेला खोप अभियानको सचेतना ऱ्यालीको आयोजना गरियो । उक्त ऱ्यालीमा महिला स्वास्थ्य स्वयंसेवकाहरु, लायन्स क्लब तथा लियो क्लबका सदस्यहरु सहभागी भएका थिए । पौष ६ गते पांगाको विष्णु देवी तथा बाल कुमारीको जात्राको अवसरमा जात्रा गर्ने मार्ग परिक्रमा गरिएको थियो । त्यस्तै गरि कीर्तिपुरको इन्द्रायणी जात्राको अवसर पारि ऱ्याली लायकुबाट शुरु भई देवढोका, समल, लायकु, बाघभैरवस्थान, तःननी, ल्वह देगः भई पुनः लायकुमा आई ऱ्यालीको समापन गरिएको थियो । उक्त ऱ्यालीमा लायन्स क्लब अफ काठमाडौं कीर्तिपुर, लियो क्लब अफ काठमाडौं कीर्तिपुर, पांगा तथा कीर्तिपुरका महिला स्वास्थ्य स्वंयसेविकाहरु, कीर्तिपुर प्रहरीका जवानहरु, स्थानिय जनताहरु, गोगंबु लायन्स क्लबका सदस्यहरु, जनस्वास्थ्य विकास केन्द्रका पदाधिकारीहरुको उपस्थित रहको थियो । उक्त ऱ्याली कार्यक्रममा इटाछें, हवाकोचा दाफा खलःले परम्परागत खिं बाजा र बाँसुरी बाजा बजाई ऱ्यालीलाई सहयोग गर्नु भएको थियो । समापन कार्यक्रममा लायन्स क्लब अफ काठमाडौं कीर्तिपुरका अध्यक्ष रबिन्द्र बहादुर प्रधानले दाफा खलः लाई परम्परागत रुपमा चलिआएको चलन अनुसारको दक्षिणा (केपु) दिई सम्मान गर्नु भएको थियो । त्यस्तै मंसिर ३० गते लायन्स क्लब कीर्तिपुर र लियो क्लब अफ कीर्तिपुरको आयोजनामा नगाउँमा भएको फोटो प्रदर्शनीमा खोप अभियानको प्रचार प्रसार सामाग्री वितरण गरिएको थियो । लायन्स क्लब कीर्तिपुरले लायन्स क्लब इन्टरनेशनल डिष्टिक्ट ३२५ बाट प्राप्त ब्यानरहरु नगरका विभिन्न क्षेत्रमा प्रचार प्रसारका लागि राख्ने काम गरेको छ । साथै कीर्तिपुर लायन्स क्लब र लियो क्लब कीर्तिपुरको आफ्नै पहलमा कीर्तिपुरमा चल्ने १५ वटा सार्वजनिक गाडीहरुमा सार्वजनिक हितको लागि दादुरा रुबेला अभियानको फ्लेक्स ब्यानरहरु राखेका छन् ।

कीर्तिपुर नगरपालिकामा रहेका ११३ जन महिला स्वास्थ्य स्वयंसेविकाहरुले आ-आफ्नो क्षेत्रमा रहेका विद्यालयका विद्यार्थीहरु, अभिभावक तथा सर्वसाधारणलाई यस अभियान र खोपको महत्वबारेमा जानकारी दिने काम गरेका छन् । साथै महिला स्वास्थ्य स्वयंसेवकहरुले आ-आफ्नो क्षेत्रका अभिभावकहरुलाई खोप केन्द्रमा बालबालिकाहरुलाई ल्याउनको लागि निमन्त्रणा पत्र बाँडने काम पनि गरेका छन् । कीर्तिपुर क्षेत्रको अधिकांस विद्यालयमा खोप केन्द्रको व्यवस्था गरेको छ । यस अभियानको लागि कीर्तिपुर क्षेत्रका विद्यालयहरुले महत्वपूर्ण भूमिका निभाएको देखिन्छ । दादुरु रुबेला खोपको महत्वको बारेमा विद्यार्थीहरुलाई खोप लगाउन अभिप्रेरित गर्ने तथा अभिभावहकरुलाई जानकारी गराउने, आवश्यक फर्निचर, पानीको व्यवस्था, विद्यालयका शिक्षक शिक्षिकाहरुलाई आवश्यक रेखदेखको जिम्मेवारी दिइ अभियानलाई सहयोग गर्ने काम विद्यालयहरुले गरेका यछन् ।

नेपाल रेडक्रस सोसाइटी कीर्तिपुर उपशाखाले कीर्तिपुरमा खोप कार्यक्रम शुरु भएको दिन पौष १० गते सचेतना ऱ्यालीको आयोजना गऱ्यो । बाघ भैरवस्थानबाट शुरु भएको ऱ्याली स्वान टोल, तुं झो, नयाँ बजार भई नगाउँ दोबाटो स्थित कीर्ति स्कूलमा आई टुंगिएको थियो । ऱ्यालीमा साथै नेपाल रेडक्रस सोसाइटी कीर्तिपुर उपशाखाले पौष १० गते देखि पौष १८ गते सम्म खोप अभियानको बारेमा कीर्तिपुरको विभिन्न क्षेत्रमा माइकिंग गर्ने जानकारी गरेको छ । साथै ने.रे.सो. कीर्तिपुर उपशाखाले विभिन्न दिनको लागि खोप केन्द्रहरुमा ४० जना स्वयंसेवकहरुको व्यवस्था गरेको छ । साथै ने.रे.सो. कीर्तिपुर उपशाखाले नगरका विभिन्न क्षेत्रमा ब्यानरहरु राख्ने काम गरेको छ । स्थानिय पत्रिपत्रिकाहरुले यस अभियानको बारेमा समाचार तथा अन्य जानकारीहरु प्रकाशित गरी सहयोग गर्ने काम गरेका छन् । यस अभियानमा आवश्यक हुने स्वास्थ्यकर्मीहरु, आवश्यक सामाग्रीहरु तथा दादुरा रुबेला तथा पोलियो खोप कीर्तिपुर नगरपालिका अन्तर्गत रहेका प्राथमिक स्वास्थ्य केन्द्र, स्वास्थ्य चौकी र उप स्वास्थ्य चौकीहरुले व्यवस्थापन गरेका छन् भने सम्बन्धित संस्थामा कार्यरत अ.हे.व. र अ.न.मी. हरुलाई मुख्य खोप कार्यकर्ताको रुपमा परिचालन गरिएको छ भने सम्बन्धित स्वास्थ्य संस्थाका प्रमुखहरु, लायन्स क्लब कीर्तिपुर तथा ने.रे.सो. कीर्तिपुर उपशाखाका पदाधिकारी तथा सदस्यहरु सुपरिवेक्षकको रुपमा खटिरहेका छन् ।

दादुरा रुबेला खोपल अभियान २०६८-६९ खोप अभियानको मुख्य दातृ निकायहरु लायन्स क्लब अन्तर्राष्ट्रिय, रोटरी क्लब अन्तर्राष्ट्रिय, युनिसेफ र विश्व स्वास्थ्य संगठन रहेका छन् । यस अभियानको लागि लायन्स क्लब अन्तर्राष्ट्रियले नेपाल सरकारलाई २४ लाख डलर सहयोग गरेका छन् ।

अन्तमा, दादुरा खोप अभियान कार्यक्रमममा ९ महिना देखि १५ वर्ष मुनिका बालबालिकाहरु कोहि पनि नछुटुन । खोप लगाउन छुट भएका बालबालिकाको पहिचान गरी तिनीहरुलाई खोप दिन नजिकको केन्द्रमा लगेर वा लैजान प्रेरित गर्नु हामी सबैको दायित्व हो । दादुरा रुबेला खोप अभियान २०६८-६९ सफल पारौं ।

**(सन्दर्भ सामाग्री श्रोतः** जिल्ला जनस्वास्थ्य कार्यालय, काठमाडौं, विष्णु देवी प्राथमिक स्वास्थ्य केन्द्र, कीर्तिपुर)

***(प्रस्तुतकर्ताः रबिन्द्र बहादुर प्रधान लायन्स क्लब अफ काठमाडौं कीर्तिपुरका अध्यक्ष तथा कीर्तिपुर नगरपालिकाको लागि लायन्स क्लब अन्तर्राष्टिय डिष्ट्रिक्ट ३२५ ए२ को तर्फबाट दादुरा रुबेला अभियानको फोकल पर्सन हुनुहुन्छ)***



## पाठक आवाज.........

## १० को नोट नक्कली होकि सक्कली ?

नेपाल राष्ट्र बैंकद्वारा जारी गरिएको १० रुपैयाँको नोट नक्कली होकी सक्कली ? कुन निकायले छानबीन गर्ने ?

सहिद पत्रिकको बर्ष ९ अंक ३६ मा गभर्नरको हस्ताक्षर नभएको नोट बजारमा आएको समाचार छापेर ध्यानाकर्षण गरेको थियो ।

नोटको तस्वीर समेत छापी गरेको ध्यानाकर्षणमा के कस्तो भयो ? म नियमित पाठकको जिज्ञासालाई मेटिदिनुहुन सम्पादलाई अनुरोध गर्दछु ।

**– राम महर्जन**




**नोट** : पाठक राम महर्जलाई जिज्ञासाको लागि धन्यवाद छ । यस पत्रिकामा १० को नोटमा गभर्नरको हस्ताक्षर नभएको सामाचारवारे अहिलेसम्म सम्बन्धित निकायले चासो देखाएको छैन । पत्रिकाको हरेक अंक अख्तियार दुरुपयोग अनुसन्धान आयोग, राष्ट्र बैंक, प्रहरी परिसर हुनमान ढोका, महानगरीय प्रहरी प्रभाग कीर्तिपुर लगायत अन्य निकायमा बितरकमार्फत वितरण भइरहेको छ । सम्बन्धीत निकायले यसवारे छानवीन गर्ने छ होला ।– सं.

## गायिका रीता महर्जनलाई नवप्रतिभा पुरस्कार प्रदान

यो वर्षको नातिकाजी नवप्रतिभा पुरस्कार कीर्तिपुर निवासी गायिका रीता महर्जनलाई पुष ३ गते एक समारोहवीच प्रदान गरियो ।



राष्ट्रपति रामवरण यादवको प्रमुख आतिथ्यमा वितरण गरिएको सम्मान कार्यक्रममा संगीतकार बुलु मुकारुङ, रचनाकार विश्व बल्लभ, गायिका संगीता शाक्य, त्यस बाहेक नातिकाजी विशेष संगीत सम्मान माणिकरत्न श्रेष्ठ, कालिप्रसाद रिजाल, नीर शाह, सन्तोष शर्मा र उन्नती बोहरालाई दिइएको थियो ।

नातिकाजी मेमोरियल सोसाइटीले संगीतकार, रचनाकार र गायिका गरी नौ जनालाई नातिकाजी सम्मान प्रदान गर्ने घोषणा गरिएको थियो ।

## माओवाद.....

र लेनिनवादी सिद्धान्तअनुसार आफ्नो देशमा सफल क्रान्ति गरेको स्मरण गर्दै माओले नै माओवादी होइन भनेर प्रस्ट पारेको बताउनुभयो ।

हामी माओ त्सेतुङ विचारधाराबाट प्रेरित छौं, माओ त्सेतुङ अध्ययनशील, सहयोगी र कुशल सङ्गठनकर्ता र सही नेतृत्व गर्ने नेता हुनुहुन्थ्यो, उहाँ जनताबाट एउटा धागो र सियोसमेत सित्तैमा नलिऊ, नम्र भएर बोल, जनतालाई दुःख नदेऊ भनेर चिनियाँ जनतालाई दिएको शिक्षा विश्वकै मानवको लागि पथप्रदर्शकको रुपमा लिनुपर्दछ उहाँले भन्नुभयो। चीनमा माओको सही नेतृत्व र विचारसँग समन्वयात्मक मेल खान्छ भन्नुभयो। ढिलो या चाँडो नेपालमा सही राजनीतिको विजय हुनेछ र समाजवादी क्रान्ति हुनेछ उहाँले भन्नुभयो ।

कार्यक्रममा जिल्ला सचिव राजवीर डंगोलले विश्वकै कम्युनिष्ट पार्टीले माओको योगदानबारे विभिन्न कार्यक्रम गरी जन्मजयन्ती मनाइरहेको छ भन्नुभयो। नेमकिपा काठमाडौं जिल्ला सदस्य गुणदास महर्जन, वीरबहादुर डंगोल, नेक्राविसंघ काठमाडौं जिल्ला अध्यक्ष विश्वक डंगोल, नेक्रायुसंघ काठमाडौं जिल्ला अध्यक्ष श्यामकुमार महर्जन, नेक्रा सांस्कृतिक संघका अध्यक्ष हरिकुमार महर्जन, कानुन अध्ययन समाजका सचिव चन्द्रलाल श्रेष्ठ, आशालाल श्रेष्ठ, प्रतिभा श्रेष्ठलगायतले माओ त्सेतुङका योगदानबारे बोल्नुभएको थियो।

कार्यक्रम जिल्ला अध्यक्ष नारायण महर्जनको अध्यक्षतामा भएको थियो ।

## नेका......

भाग लिए । एमालेभित्र असन्तोषकै कारण हालै अशोक राईको नेतृत्वमा संघीय समाजवादी पार्टी स्थापना भयो । पार्टी गठनको क्रममा असन्तुष्ट जनजाति नेताहरूले आफ्नो खोलेको पार्टीलाई देशकै सबभन्दा ठूलो बनाउने उद्घोष गरे । जनजाति नेताहरूको त्यो तृष्णा सफल होला या नहोला समयले पछि देखाउनेछ। जातीय राजनीति गर्ने एमाओवादी ठूलो दल त बन्यो, ठूलाको नाताले सरकारको नेतृत्व पायो, दल धनी भयो। तर त्योसँगै 'जनयुद्ध' को समयमा आमूल परिवर्तन गर्ला भन्ने आशयले पाएको प्रतिष्ठा, इज्जत पनि समयसँगै बग्यो बद्नाम भयो र अन्ततः पार्टी नै फुट्यो ।

कम्युनिष्टको सिद्धान्त र विचार छोडेर जसरी भएपनि पार्टी ठूलो बनाउने, पैसा कमाउने र भ्रूटको खेती गरेरै कार्यकर्ता तह लगाउने काम गरेको हुँदा एमाओवादी फेरि फुट्नु जरुरी छ । एमाओवादी अध्यक्ष दाहालमा तहल्का मच्चाउने, कार्यकर्ता तताउने गुणबाहेक अर्को देखिएको छैन । कहिले गरमागरमी कुरा गरेर रगत तताउने, कहिले मार्मिक कुरा सुनाएर भावुक बनाउने काम अध्यक्ष दाहालले गरिरहेका छन्। कार्यकर्ताहरू पनि तात्तातो कुरा सुनाएर जुरुक्क जुरुक्क उचाल्ने कुरा गरेपछि मख्ख हुन्छन् र देशमा परिवर्तन नै भएको अनुभूति गर्छन् । जनजातिको बखान गरेपछि, बखान गर्नेबित्तिकै सबै समस्या समाधान भएको ठान्ने जनजाति नेता तथा कार्यकर्ताहरू जातीय राजनीतिले देशमा हिंसा भड्कने, जातीय द्वन्द्व बढ्नेतर्फ किन चासो राख्दैनन् ?

अशोक राई नेतृत्वको संघीय समाजवादी पार्टीमा सामेल नभएका, हुन नचाहेका नेकासित सम्बन्धित जनजातिहरू फेरि कुमार राई र पासाङ शेर्पा तथा जनजातिविज्ञ चैतन्य सुब्बाहरूको नेतृत्वमा अर्को जनजातिसम्बन्धी दल खोल्न लागेको छ। यही पुस १५ गते अगाडि नै 'सामाजिक लोकतान्त्रिक बहुल राष्ट्रिय पार्टी' गठन गर्ने तयारी गरिरहेको जानकारी प्रकाशमा आएको छ । पार्टीको नेतृत्व कसले गर्ने हो सोको टुङ्गो नलागेपनि नेका असन्तुष्टहरूको सो जनजाति पार्टीको भूमिका के हुने हो र त्यसलाई कसरी निरन्तरता दिने हो ? चर्चाको विषय बनेको छ । जातीय उत्पीडित नेपाली जनजातिको पक्षमा गठन हुने सो पार्टीले कुन दर्शन, विचार र सिद्धान्तलाई मार्गदर्शक बनाउने हो ? विचारणीय छ ।

\- गौरव प्रधान

## पुष १४...........

मंसिर ८ गते पहिलोपटक आह्वान गरिएको उल्लेख छ ।

राजनीतिक सहमति कायम गरी प्रधानमन्त्रीको चयन र मन्त्रिपरिषद्को गठन गर्नका लागि राष्ट्रपति डा. यादवले सोमबार छैठौं पटक समय थप गर्नुभएको हो ।

## विद्युत कटौती..........

साते दिन बाह्र घण्टा विद्युतभार कटौती हुनेछ । नदीहरूमा पानीको जलस्तर घट्न गएको कारण मागअनुसारको आपूर्तिमा असन्तुलन रहेको हुँदा साविकमा हुँदै आएको विद्युतभार कटौतीको तालिकामा हेरफेर गर्नुपरेको प्राधिकरणले जनाएको छ ।

## हस्तलिखित.....

राहदानी विभागको तथ्याङ्क अनुसार २०१५ नोभेम्बर २४ सम्म र त्योभन्दा माथि म्याद भएका २५ लाख हस्तलिखित राहदानी अहिले प्रयोगमा छन् । २०१५ नोभेम्बर २४ पछि हस्तलिखित राहदानी प्रयोग गर्न पाइने छैन । विभागले एकै दिन काम नलाग्ने राहदानीहरु एकै पटक एमआरपी बनाउन आएमा विभागलाई गाह्रो हुने भएकोले पछि अप्ठेरो स्थिति सामना गर्न नपरोस् भनेर अहिल्यैदेखि अभियानका रूपमा जाने योजना बनाएको यादवले जानकारी दिनुभयो । विभागले एमआरपी वितरणलाई मात्र होइन त्यसपछि आउने 'इ-पासपोर्ट' लाई समेत लक्ष्य गरेर स्थायी प्रणाली विकास गर्ने योजना बनाएका छ ।'

विभागका प्रमुख यादवका अनुसार नयाँ योजना अनुसार पहिलो चरणमा देशभर २१ वटासम्म 'इनरोलमेन्ट सेन्टर' स्थापना गरिनेछ। यस्ता सेन्टरमा सरकारी कर्मचारी खटिनेछन्, जहाँ फोटो खिच्नेदेखि मौखिक रूपमा सम्बन्धित व्यक्तिसँगै कुराकानी गरी अनलाइन फाराम भरिनेछ । अहिलेजस्तो जिल्लाबाट १५/१५ दिनमा फाराम बोकेर ल्याउन पर्दैन । सेन्टरमा गई राहदानीका लागि फाराम भर्ने बित्तिकै त्यो विभागमा आइपुग्नेछ ।

# साहित्य

## कविता

– राम महर्जन
कीनपा–१६ ,नगाउँ

### जबसम्म दलीय स्वार्थ छोडिदैन तबसम्म.....

मात्र नाङ्गलो ठटाइँले हाती तर्सिदैन
बाँदर जिस्काईले लाटो रिसाउँदैन
लुटे कुकुरको भुकाइले भोटे कुकुर डराउँदैन
स्यालको बथानले बाघ भगाउँदैन
देशको रोग झनझन बल्झिँदैछ
धामी लगाई कति ठटाउँछौ ढयाङ्ग्रो
स्वदेशी डाक्टरले केही नलागे
पुरोहित लगाई पञ्चबली दिने होकी ?
जे गर्दा हुन्छ देशलाई निरोगी बनाऔ
यो देशमा हामी जन्मिएकै हौं
यो देशमा हुर्किएकै हौं
स्वार्थ छोडेर अलिकति माया गरी हेरौं
पवित्र देवभूमि हो देश नेपाल
न सम्झ मात्र जे गर्दा पनि चल्छ कमाल
विश्व प्रसिद्ध छ सर्वोच्च हिमाल
सुन्दर शान्त छ यो देश नेपाल
जबसम्म दलीय स्वार्थ छोडिँदैन
तबसम्म दशेले निकाश पाउँदैन
जबसम्म देश र जनता प्रति माया पलाउँदैन
तबसम्म यो देशमा गुमराह राज भईरहन्छ।

# किपू बचतमा नयाँ नेतृत्व

किपू बचत तथा ऋण सहकारी संस्थाको चौधौं वार्षिक साधारण सभाले नयाँ नेतृत्व चयन गरेको छ ।

नयाँ कार्यसमिति निर्वाचन समितिले गरेको नाममा कसैले विरोध नभएपछि पुन: रामबहादुर महर्जनको अध्यक्षतामा नयाँ कार्य समिति निर्वाचित भएको हो । अन्य पदमा उपाध्यक्षमा पूर्ण महर्जन, सचिवमा शोभा महर्जन, कोषाध्यक्षमा संघराम महर्जन र सदस्यहरुमा सुविन्द्र महर्जन, अनिता मानन्धर र रमेश मानन्धर निर्विरोध निर्वाचित भएका छन् ।

त्यसैगरी सो भेलाबाट बुद्धरत्न महर्जनको संयोजकत्वमा शान्ति महर्जन र फुर्सद महर्जनको सदस्यमा लेखा समितिको पनि निर्विरोध निर्वाचित गरेका छन् ।

चौधौं वार्षिक साधारण सभामा प्रमुख अतिथि नेपाल बचत तथा ऋण केन्द्रीय सहकारी संघ लिमिटेड नेप्सकुनका अध्यक्ष मिनराज कँडेलबाट पानसमा बत्ती बाली उद्घाटन गर्नुभएको थियो भने अन्य अतिथिबाट १४ वर्षको स्मरणमा १४ वटा दियो बालिएको थियो । उद्घाटन मन्तव्यको क्रममा प्रमुख अतिथि कँडेलले किपू बचत कीर्तिपुर क्षेत्रमा समुदायमा आधारित सहकारी हो भन्नुभयो ।

सभामा प्रगतिशील बचत तथा ऋण सहकारी संस्था लि.का पञ्चलाल महर्जन, विकल्प सहकारी संस्थाका प्रदीप कुमार महर्जन, कीर्तिपुर बहुउद्देश्यीय सहकारीका रमेश महर्जन, ऐचोपैंचो बचत तथा ऋण सहकारी संस्थाका दयाराम प्रजापति, किपू बचत तथा ऋण सहकारी संस्थाका सल्लाहकार बालकृष्ण महर्जनलगायतले शुभकामना मन्तव्य राख्नु भएको थियो ।

सभामा अध्यक्ष महर्जनले पेश गरेको संस्थाको वार्षिक प्रतिवेदन, कोषाध्यक्ष र लेखा समितिको आर्थिक प्रतिवेदन पारित गरेको थियो ।

सो कार्यक्रम मंसिर २३ गते थानकोटस्थित त्रिभुवन पार्कमा सम्पन्न भएको थियो ।

## थांवहा:विचा गुठीको अनरोध

कीर्तिपुर नगरपालिका वडा नं.१ थांबहा: टोलमा गत श्रावण २५ गते श्रीकृष्ण जन्माष्टमीको दिन श्री नृत्यनाथको पूजाआजा गरी शुरु गरिएको बाँसुरी बाजा, सात गाउँले जात्राको अवसर पारी पौष ५ गते श्री नृत्यनाथको धुमधान पूजाआजा गरी सम्पन्न भएको छ । उक्त बाँसुरी बाजामा केटा केटी गरी जम्मा ४७ जनाको सहभागी रहेको थियो । जसमा बाँसुरीमा ज:उसी खानेमा अनिल महर्जन र ख:उसीमा रिकेत महर्जन भने खिंमा ज:उसी राजु श्रेष्ठ र ख:उसीमा बाबुराजा महर्जन छानिएको थियो ।

साथै थांबहा: विचा: गुठीको गएको सोमबार बसेको बैठकले समाजमा भईरहेको नकारात्मक सोचहरुलाई त्यागेर नयाँ सोचका साथ अगाडि बढ्न सबैको ध्यानाकर्षण गराएको छ। जसमा कुनै पनि घरपरिवारमा कोही दिवंगत भएमा ल्व:चा वनेगु भनेर विभिन्न नाना सामानहरु लिएर जाने परम्परालाई त्यागेर प्रत्येक दिवंगत घरमा रु.१५०/- रुपैया राख्ने, घ:सू गर्ने बेला अत्यावश्यक व्यक्तिहरुलाई मात्र बोलाई घ:सू मनाउने, अनि दकिलाको अवसरमा आजभोलि विचा: हायेक:व:पिं(सम्वेदना प्रकट) गर्ने सबैलाई बोलाई धुमधामका साथ भोज बोलाउने चलनलाई निस्तेज बनाई जाने र अत्यावश्यक व्यक्तिहरुलाई मात्र दकिला भोज मनाउँदै जाने भनेर आह्वान गरिएको छ ।

## नेपालमा विद्युतीय संचार र पत्रपत्रिका

संचार माध्यमले संसार हल्लाउन सक्दछ। २१ डिसेम्बरमा पृथ्वी ध्वस्तको सूचना प्रवाह संचार माध्यमले नै गरियो।

सत्य होस् या असत्य (भ्रम) होस् संचार माध्यमले भनेपछि, लेखेपछि त्यसको प्रभाव आज विश्वमा पर्नु स्वभाविक छ । अहिलेको टेक्नोलोजीको युगमा हरेक प्रशारण र छपाई विश्वले हेर्न र पढ्न सकिन्छ । सत्य र सही सूचनाले, अन्वेषनात्मक हुनुपर्दछ भन्ने मान्यता सूचना तथा संचार मन्त्रालय, प्रेस काउन्सिल नेपाल पत्रकार महासंघ आफ्नो मापदण्डमा पर्दछ ।

देशमा सूचना प्रवाह गर्ने विद्युतीय च्यानल, एफएम, केबुल, पत्रपत्रिकाको संख्या वृद्धि हुँदै आइरहेको छ ।

सूचना तथा संचार मन्त्रालयले पुस ९ गते मन्त्रालयका प्रवक्ता नारायण प्रसाद सञ्जेलद्वारा पत्रकार भेटघाटमा दिनुभएको प्रगति विवरण अनुसार मंसिर महिनासम्म टी.भी.को इजाजत संस्था ३९ वटा, डाउनलिंक अनुमति ८३ वटा, एफएम ४९६ मा नियमित प्रशारण ३३६ वटा केबुलका अनुमति प्राप्त ७६० वटा छन् भने पत्रपत्रिकामा २०६९ असार मसान्तसम्ममा ६३५० रहेको जनाएको छ ।

# विचा: हायेका



स्व. हर्षबहादुर महर्जन (कीपू)
बूगु दिं : ने.सं. १०४३ थिला त्रियोदशी
मदुगु दिं : ने. सं. ११३३ थिला अष्टमी



थांबहा: त्वा:या थकाली भाजु **हर्षबहादुर महर्जन**
वंगु थिला अष्टमी पौष ६ गते आकाझाकां
मदुगुलिं वय्क:या आत्माया चीरशान्तिया
कामना यासें सुखावती भुवनंसं बास लायेमा धका:
मनंतुसें दुखं कपिं सकल छेंज:पिन्त
धैर्य धारण याये फयेमा धका:
भगवान बुद्ध याके फ्वना च्वना ।

**थांबहा: दाफा खल:**

**थांबहा: विचा गुठी**

## स्वास्थ्य टिप्स

– तिलगंगा आँखा प्रतिष्ठान

# मधुमेह एक जानकारी

**मधुमेह** : शरीरको प्याक्रियाज्‌बाट निस्कने इन्सुलिन नामको ग्रन्थि रसको कमि भएर वा यसले गर्नुपर्ने काममा रोकावट आएर रगतमा ग्लुकोजको मात्रा बढ्नुलाई मधुमेह भनिन्छ ।

प्रायः ४५ वर्ष माथिका व्यक्तिलाई देखा पर्ने यो रोगलाई कुनै उमेर तथा लिंगको छेकबार भनेछैन । यो वंशानुगत तथा धेरै मोटो शारिरीक व्यायाम कम गर्ने व्यक्तिलाई देखा पर्दछ । धेरै पिसाव हुने, तिर्खा ज्यादै लाग्ने, राम्ररी खाए पनि दुब्लाउँदै जाने, बरावर घाउ खटिरा आउने तर छिटो निको नहुने, वेहोस हुने जस्ता लक्षणहरु यस रोगमा देखा पर्न सक्दछन् । स्वास्थ्य परिक्षण गरेर रगतमा ग्लुकोजको मात्रा जाँच गरेपछि मात्र यस रोगको निदान गर्न सकिन्छ ।

Normal retina
Retinopathy
Macula
Optic disk
Hemorrhage
Aneurysms

**मधुमेहले आँखामा पार्ने असहरु**

मधुमेहले शरीरका महत्वपूर्ण अंगहरु जस्तै स्नायु, मृगौलाका साथै आँखामा विभिन्न जटील समस्याहरु निम्त्याउँछ । पटक पटक आनो (Stye) आउने, आँखा सुख्खा हुने (Dry Eye), छिटो-छिटो चस्माको पावर परिवर्तन हुने, मोतिविन्दु छिटो देखापर्ने, जलविन्दुको सम्भावना बढी हुने लगायत आँखाको पर्दा (Retina) मा गम्भीर असर पार्दछ, जसलाई डाइबेटिक रेटिनोपेयी (Diabetic Retionpathy) भनिन्छ । यसले अन्त्यमा मानिसलाई अन्धो पनि बनाउन सक्छ । एक तथ्याङ्क अनुसार संसारमा १२ प्रतिशत अन्धोपन यही कारणले हुने गरेको पाईएको छ ।

मधुमेहले मुख्यतः आँखाको पर्दाको रक्तसंचारमा प्रभाव पार्दछ । मधुमेहको राम्रो नियन्त्रण नहुँदा ग्लुकोजको मात्रा बढ्न गई रेटिनाको रक्तकोशिकाहरु (Capillar-ies) मा प्रतिकुल असर पर्दछ । जसले गर्दा पर्दाको दृष्टि केन्द्रमा सुजन (Macular Oedema) तथा रक्तश्राव (Retinal Hemorrhage) हुनगई दृष्टि कमजोर हुन्छ । यदि समयमै उपचार नभएमा नयाँ रक्तकोशिकाहरुको विकास भई अत्याधि रक्तश्राव हुने तथा अन्त्यमा पर्दा उप्किन तथा खुम्चिन गई दृष्टि सदाका लागि गुम्न सक्छ । यो समस्या केही समयपछि मधुमेहका प्राय सबै रोगहरुमा देखा पर्दछ ।



## कीर्तिपुर.............

यस अभियानको शुभारम्भ कार्यक्रम कीर्ति सेकेण्डरी इंगलिस स्कूलको प्रांगणमा एक कार्यक्रम गरी शुरुवात गरियो । शुभारम्भ कार्यक्रमको संयोजन लायन्स क्लब अफ काठमाडौं कीर्तिपुर र लियो क्लब अफ काठमाडौं कीर्तिपुरले गरेको थियो ।
लायन सुनिल श्रेष्ठले संचालन गर्नु भएको उक्त कार्यक्रमको सभापतित्व लायन्स क्लब अफ काठमाडौं कीर्तिपुरका अध्यक्ष तथा कीर्तिपुर नगरपालिकाको लागि लायन्स क्लब अन्तर्राष्ट्रिय डिष्ट्रिक्ट ३२५ ए२ को तर्फबाट दादुरा रुबेला अभियानको फोकल पर्सन लायन रबिन्द्र बहादुर प्रधानले गर्नु भएको थियो । समारोहका अतिथिहरुमा पेट्सानका राष्ट्रिय अध्यक्ष रमेशमान महर्जन, एस आर प्याब्सनका अध्यक्ष दिलमान महर्जन, नेपाल रेडक्रस सोसाइटी कीर्तिपुर शाखाका सभापति हर्षमान महर्जन, कीर्तिपुर स्वयंसेवक समाजका अध्यक्ष प्रज्वलमान प्रधान, विष्णु देवी प्राथमिक स्वास्थ्य केन्द्रका प्रमुख अर्जुन तामांग, बाहिरी गाउँ उपस्वास्थ्य चौकीका प्रमुख युवराज उप्रेती, कीर्ति सेकेण्डरी स्कूलका प्रिन्सिपल कृष्ण उपाध्याय हुनुहुन्थ्यो । सबै अतिथिहरुले संयुक्त रुपमा पानसमा दीप प्रज्वलन गरी अभियानको उद्घाटन गर्नुभयो । सो कार्यक्रममा विष्णु देवी प्राथमिक स्वास्थ्य चौकीका प्रमुख अर्जुन तामांगले स्वागत मन्तव्य दिनु भएको थियो । कार्यक्रममा अतिथिहरुले मन्तव्य दिदै दादुरा रुबेला खोप अभियानको बारेमा प्रकाश पार्नु भएको थियो । ने.रे.सो. कीर्तिपुर उपाशाखाका सभापनि हर्षमान महर्जनले उपस्थित सबैलाई धन्यवाद ज्ञापन गर्नु भएको थियो । सभापति लायन रबिन्द्र बहादुर प्रधानले खोप अभियान सफल बनाउन सबैको सहयोग चाहिने बताउनु भयो । कीर्ति सेकेण्डरी स्कूलको प्रांगणमा उपस्थित बालबालिकाहरुलाई खोप दिइ अभियानको शुरुवात गरिएको थियो । खोप कार्यक्रम पौष १८ गते सम्म संचालन हुनेछ ।





## पौष ११ गते देखि लागू हुने गरि जारी गरिएको विद्युत कटौती तालिका

| नं. | आईतबार | सोमबार | मंगलबार | बुधबार | बिहीबार | शुक्रबार | शनिबार |
|---|---|---|---|---|---|---|---|
| १ | ०३:००-०९:००<br>१३:००-१९:०० | १०:००-१७:००<br>२०:००-०१:०० | ०९:००-१६:००<br>१९:००-२४:०० | ०८:००-१४:००<br>१८:००-२४:०० | ०५:००-१२:००<br>१७:००-२२:०० | ०४:००-११:००<br>१६:००-२१:०० | ०४:००-१०:००<br>१४:००-२०:०० |
| २ | ०४:००-१०:००<br>१४:००-२०:०० | ०३:००-०९:००<br>१३:००-१९:०० | १०:००-१७:००<br>२०:००-०१:०० | ०९:००-१६:००<br>१९:००-२४:०० | ०८:००-१४:००<br>१८:००-२४:०० | ०५:००-१२:००<br>१७:००-२२:०० | ०४:००-११:००<br>१६:००-२१:०० |
| ३ | ०४:००-११:००<br>१६:००-२१:०० | ०४:००-१०:००<br>१४:००-२०:०० | ०३:००-०९:००<br>१३:००-१९:०० | १०:००-१७:००<br>२०:००-०१:०० | ०९:००-१६:००<br>१९:००-२४:०० | ०८:००-१४:००<br>१८:००-२४:०० | ०५:००-१२:००<br>१७:००-२२:०० |
| ४ | ०५:००-१२:००<br>१७:००-२२:०० | ०४:००-११:००<br>१६:००-२१:०० | ०४:००-१०:००<br>१४:००-२०:०० | ०३:००-०९:००<br>१३:००-१९:०० | १०:००-१७:००<br>२०:००-०१:०० | ०९:००-१६:००<br>१९:००-२४:०० | ०८:००-१४:००<br>१८:००-२४:०० |
| ५ | ०८:००-१४:००<br>१८:००-२४:०० | ०५:००-१२:००<br>१७:००-२२:०० | ०४:००-११:००<br>१६:००-२१:०० | ०४:००-१०:००<br>१४:००-२०:०० | ०३:००-०९:००<br>१३:००-१९:०० | १०:००-१७:००<br>२०:००-०१:०० | ०९:००-१६:००<br>१९:००-२४:०० |
| ६ | ०९:००-१६:००<br>१९:००-२४:०० | ०८:००-१४:००<br>१८:००-२४:०० | ०५:००-१२:००<br>१७:००-२२:०० | ०४:००-११:००<br>१६:००-२१:०० | ०४:००-१०:००<br>१४:००-२०:०० | ०३:००-०९:००<br>१३:००-१९:०० | १०:००-१७:००<br>२०:००-०१:०० |
| ७ | १०:००-१७:००<br>२०:००-०१:०० | ०९:००-१६:००<br>१९:००-२४:०० | ०८:००-१४:००<br>१८:००-२४:०० | ०५:००-१२:००<br>१७:००-२२:०० | ०४:००-११:००<br>१६:००-२१:०० | ०४:००-१०:००<br>१४:००-२०:०० | ०३:००-०९:००<br>१३:००-१९:०० |